# शिवलिङ्गको कुन मुख केका लागि पूजा गर्ने?

nepalnews.com/life-arts/17778-2020-02-20-15-36-50




भगवान शिवलाई प्रायः लिङ्ग स्वरूपमा देखाइन्छ। हुन त लिङ्गबाहेक मानव स्वरूपमा पनि देखाइन्छ। तापनि शिवलिङ्गको महत्त्व हिन्दु धर्ममा अधिक छ।

शिवलिङ्ग आफैं शिव र शक्ति (देवी पार्वती)को संयुक्त स्वरूप हो। शिवलिङ्ग भनिए पनि त्यसमा योनी पनि देखाइएको हुन्छ। अर्थात् शिवलिङ्ग भनेको शिव-शक्तिको समागम रूप हो।

शिवलिङ्गमा मुखाकृति देखाइने चलन पनि छ। यसरी मुखाकृति देखाइँदा एक, चार वा पाँच मुख देखाइन्छ।

एकमुखी शिवलिङ्ग अलि कम छ ।

शिवलिङ्ग आफैं शिव र शक्ति (देवी पार्वती)को संयुक्त स्वरूप हो। शिवलिङ्ग भनिए पनि त्यसमा योनी पनि देखाइएको हुन्छ।
शिवलिङ्गमा प्रायः चारैतिर मुखाकृति बनाइएको हुन्छ। यसलाई चतुर्मुखी शिवलिङ्ग भनिन्छ।

माथितर्फ (ऊर्ध्व) फर्केको अर्को मुखाकृति केहीमा देखाइन्न। चारवटै मुखाकृति देखाइए तापनि ऊर्ध्वसमेत मानेर शिवलिङ्गलाई पञ्चमुखी शिवलिङ्ग नै भनिने चलन पनि छ।

अझ पञ्चमुखीमा अधोमुख पनि थपेर छवटा मुख रहेको पनि मानिन्छ।

पञ्चलिङ्ग (पञ्चशिवलिङ्ग) का पाँचै मुखाकृति के-के हुन् त ? र षण्मुखीमा अधोमुख के हो ? आउनुहोस्, हेरौँ-

**१) पश्चिमाभिमुख - सद्योजात**

शिवलिङ्गको पश्चिम मुखलाई सद्योजात भनिन्छ। सद्योजात संसारको उद्धारकर्ता मानिन्छ। यस मुखलिङ्गले इच्छाशक्ति जनाउँछ। यो वैदिक देवता भवसँग सम्बन्धित छ। यस मुखसँग सम्बन्धित रङ्ग सेतो हो।

देवतामध्ये सद्योजात भगवान् विष्णुसँग सम्बन्धित छ। वेदअनुसार यस मुखाकृतिले भवलाई जनाउँछ।

यस मुखले खुसी र दुःख दुवै दिन्छ। यस मुखमा भगवान् शिवको रौद्र वा रिसाहा रूपलाई पनि उजागर हुन सक्छ।

यस मुखालिङ्गले आत्मालाई ब्रह्म वा परमात्मा (शिव)सँगसम्म पुर्‍याउँछ । सद्योजात स्वरूपसँगको सान्निध्यका लागि एकान्तमा साधना गर्नुपर्छ।

**२) उत्तराभिमुख - वामदेव**

भगवान शिवको मुखलिङ्गमा उत्तरतर्फको लिङ्गलाई वामदेव भनिन्छ। प्रायः सबै शिवलिङ्गको योनिरूपी जलधार पनि उत्तरतर्फ नै फर्केको हुन्छ। वामदेवले आत्मालाई परमात्माको सान्निध्यमा सिद्ध गरी राख्दछ। यसर्थ यस मुखलाई परालिङ्ग पनि भनिन्छ।

वामदेवले शिवको चित्त रूपलाई जनाउँछ । वामदेवले कुनै पनि प्राणीलाई शारीरिक र मानसिक रुपमा औषधोपचार गर्न सक्दछन्। वामदेवलाई ज्येष्ठ, श्रेष्ठ, रुद्र, काल, कलविकरण, बलविकरण, बल, बलप्रमथन, सर्वभूतदमन र मनोन्मनको समष्टि रूप मानिन्छ।

देवतामध्ये वामदेव ईश्वरसँग सम्बन्धित मानिन्छ। वामदेव रक्तवर्णको मानिन्छ। वामदेवलाई उमावक्र वा ताम्रेश्वर पनि भनिन्छ।

एकादश रुद्रलाई संयुक्त रूपमा वामदेव भनिन्छ। ब्रह्माले मनष्पुत्र (१० ऋषि) सृष्टि गरे पनि सबै ध्यान र साधनामा लीन भए, कसैले पनि सृष्टिचक्र चलाएनन्। त्यसैले ब्रह्माले वामदेवहरूको सृष्टि गरे, जसले मेघ, बादल, इन्द्रेणी, औषधीलगायत निर्जीव चीजहरू बनाए।

**३) दक्षिणाभिमुख - अघोर**

पञ्चमुखी शिवलिङ्गमा सबैभन्दा डरलाग्दो स्वरूप अघोर हो। यो मुख दक्षिणपट्टि फर्किएको हुन्छ। अघोर ज्ञान शक्तिको प्रतीक हो। दक्षिण मुखलाई भैरव पनि भनिन्छ र, यो शिवको बुद्धि रूप हो।

अघोरले आत्माको परमात्मासँगको मिलनलाई नवीकरण गर्छ। अघोर विशेषतः शैवतन्त्रसँग सम्बन्धित छ। अघोर शैवमा शून्यताको, त्रिक परम्परामा परब्रह्म, वज्रयानमा ज्ञान र हिन्दु धर्ममा दण्डपाणि र धर्मपालकका रूपमा मानिन्छ।

रुद्रको सŒव गुणको रूप अघोर, रज गुणयुक्त रूप घोर तथा तम गुणको रूप घोरतर हो। वैदिक दर्शनअनुसार भैरव प्रमाण र प्रमेयको संयुक्त रूप हो।

देवताहरूमध्ये अघोर ब्रह्मासँग सम्बन्धित छ भने वैदिक देवतामा अघोरलाई शर्व मानिन्छ। यो धूम्र वर्णको मानिन्छ।

**४) पूर्वाभिमुख - तत्पुरुष**

शिवलिङ्गको पूर्व मुखलाई तत्पुरुष भनिन्छ। यस मुखलिङ्गले आनन्द शक्तिलाई जनाउँछ। यस मुखलिङ्गले आत्मालाई परमात्मा (वा शिव) को दर्शन गराउँछ। तसर्थ, यो मुख गुरु रूप हो।

पञ्चतत्त्वमध्ये यो पृथ्वीको प्रतीक हो र यो पहेँलो रङ्गसँग सम्बन्धित छ। यस मुखलाई नन्दीवक्र पनि भनिन्छ।

यो मुखाकृतिले वैदिक रुद्र र महादेवलाई जनाउँछ। तत्पुरुष रुद्र, ऋषिमुनि, ज्ञानी र योगीहरूसँग सम्बन्धित मानिन्छ।

कसैलाई एकाग्र भएर बस्न गाह्रो छ भने शिवलिङ्गको पूर्वमुख तत्पुरुषको साधना गर्नु उपयुक्त मानिन्छ। भगवान शिवको तत्पुरुष मुख साधनामा लीन देखाइन्छ।

**५) ऊर्ध्वाभिमुख - ईशान**

शिवलिङ्गमा माथिपट्टि (ऊर्ध्व) फर्केको मुख हो -ईशान वा सदाशिव। यसले परमात्मालाई लुप्त बनाउँछ। पञ्चतत्त्वमा ईशानले आकाशलाई जनाउँछ। यसलाई सूर्यको प्रतीक पनि मानिन्छ। यसलाई शिवको मूर्धा मानिन्छ ।

ईशान वेद, शास्त्र आदि विद्या तथा ६४ कलाको नियमक हुन्। उनलाई सबै प्राणीका अधिपति, वेदको प्रमुख र हिरण्यगर्भको स्वामी मानिन्छ।

ईशान मुखको साधनाले जीव र देवता सबैलाई नियन्त्रण गर्न सिकाउँछ। सामाजिक जीवनका समस्याले केही असर नगर्ने गरी ईशान मुखको पूजाले अहंलाई नष्ट गर्न सहयोग गर्छ। यस मुखका साधकहरू आफू नभई सम्पूर्ण ब्रह्माण्डलाई नै अपनाउँछन्।

दस दिक्पालमध्ये उत्तरपूर्व कुनाको अधिष्ठात्र ईशान देवता र शिवलिङ्गको ऊर्ध्वमुख ईशान फरक हुन्।

### ६) अधोमुख

पञ्चमुखी शिवलिङ्गमा यो मुख पर्दैन। तर, शैवावलम्बीहरूले भगवान शिवलाई नर्कतर्फ (अधो) पनि हेर्ने र त्यहाँ पनि करुणा राखी उद्धार गर्नुहुने मान्दछन्। यसरी तल फर्केको मुखलाई अधोमुख भनिन्छ। यो मुखाकृति चित्र वा अन्य कलामा देखाइन्न। तसर्थ, चतुमुर्खी वा पञ्चमुखी शिवलिङ्ग देखाइए तापनि शिवलिङ्गको अधोमुख पनि हुन्छ र शिवलिङ्ग तसर्थ षण्मुखी हो भन्ने मानिन्छ।

अधोमुखले परमात्मासँगको मिलनलाई भोग गर्छ। देवताहरूमध्ये यो षण्मुखसँग सम्बन्धित छ। यो अग्निसँग सम्बन्धित छ।